

# आमाको माया

अ
साझा शिक्षा ई-पाटी
OLE NEPAL



# आमाको माया

लेखन : रमेश चन्द्र अधिकारी
चित्राङ्कन : सिमल
सम्पादन : ध्रुबकुमार घिमिरे
प्रकाशन : साझा शिक्षा ई-पाटी
संस्करण : २०७१



साझा शिक्षा ई-पाटी
OLE NEPAL

“आमा !

आमा !

जाडो भयो ।”

छोराछोरीहरू कराए ।





"पख ! पख !
म झासझुस
लिएर
आउँछु ।"
माउले भनी ।



आमाले झासझुस बटुली ।


गुँडमा झासझुस ल्याएर
बच्चाहरूलाई
ओढाई ।

"आमा आमा
फेरि
जाडो भयो।"
उनीहरूले भने।





"पख ! पख !
म नाना खोजी
ल्याउँछु ।"
आमाले भनी ।

# माउले टालाट्टुली बट्टुली







र बच्चाहरूलाई ओढाई ।





"आमा आमा
फेरि
जाडो भयो ।"
उनीहरूले फेरि भने ।



"पख ! पख !
तातो बुबु खाऊ । न्यानो हुन्छ ।"
आमाले भनी ।
उसले पालैपालो सबैलाई दुध चुसाई ।

“आमा ! आमा !
फेरि जाडो भयो ।”
उनीहरू त रुन पो थाले ।



"अब के
गर्नें होला ?"
माउले सोची ।



माउले आफ्नो जिउको भुत्ला उखेली



र सबैलाई भुत्ला ओढाई ।





न्यानो भयो ।

सबै शावकहरू निदाए ।

सा-साना बालबालिकाका लागि उपयुक्त हुने नेपाली बालसाहित्यका पुस्तकहरूको खाँचोलाई मध्यनजर गरेर साझा शिक्षा ई-पाटी (OLE Nepal) ले नेपालका विभिन्न स्थानहरूमा चित्रकथा लेखन कार्यशाला आयोजना गर्दै आइरहेको छ । यसैक्रममा २०७१ सालमा पोखरा, विराटनगर, नवलपरासी र काठमाडौँमा स्थानीय लेखकहरूको सहभागितामा बालचित्रकथा लेखन कार्यशाला आयोजना गरिएको थियो । यो उक्त कार्यशालाहरूबाट प्राप्त बालकथाहरू मध्ये छनौट भएर सम्पादन तथा चित्राङ्कन गरिएका कृतिहरू मध्ये एक हो । विद्यालयमा शिक्षक र घरमा अभिभावकले यसलाई वाचन गरेर सुनाउँदा साना शिशुहरूमा ध्यान दिएर सुन्ने र पुस्तकमा रमाउने बानी पर्छ । साथै भर्खर पढ्न सुरु गरिरहेका बालबालिकाहरूले समेत आफैँले रुचि पूर्वक पढ्ने हुँदा यसबाट उनीहरूको पठन सीपको विकास हुने आशा लिइएको छ ।



छोराछोरीलाई जाडो भयो ।

आमाले नाना ओढाइन् ।

तातो दुध खुवाइन् ।

तर न्यानो भएन ।

अब आमाले के गरिन् होला त?

साझा शिक्षा ई-पाटी
OLE NEPAL